# कुम्भेश्वर-इतिहास



लेखक

हेमराज शाक्य

# परिचय

आजको विज्ञान र प्राविधिकीको युगमा पनि जुनसुकै सभ्य र उन्नतिशील देशमा एकथरि पुरातत्त्वान्वेषकहरू अतीत कालका कुराहरू पत्ता लाउन र जान्न निमित्त अनेक अन्वेषण र अनुसन्धान गर्न लागिरहेका हुन्छन्। किनभने, यो सत्य साबित भैसकेको कुरो छ– जुनसुकै देशको इतिहास, सभ्यता र संस्कृतिको अध्ययन निमित्त पुरातात्त्विक वस्तुहरुको खोजी हुनु नितान्त आवश्यक छ।

प्रस्तुत पुस्तिका " कुम्भेश्वर इतिहास " आकार प्रकारमा ज्यादै सानो छ। हुनत, घडीमा बालकमानी पनि सानै हुन्छ, तर यसको क्रिया प्रमुख हुन्छ। ललितपुरको इतिहासमा यसैले यस पुस्तिकाको विशेष स्थान हुनेछ, साथै देशको इतिहासमा पनि। यस पुस्तिकामा उल्लिखित लिच्छवि, मल्ल र शाहकालका शिलालेखहरु महत्वपूर्णकाछन्।

यस सानो पुस्तिकाको प्रकाशनले कुम्भेश्वरको महिमा र महत्वको अतिरिक्त; यसबाट स्थानीय जनतामा आफ्नो पुरातात्त्विक स्थल र क्षेत्र, इतिहास र संस्कृति, मूर्ति र शिलापत्रको सुरक्षा र संरक्षण सदैव भैरहनु पर्दछ भन्ने भावना पनि अवश्य एकबार सिर्जना गर्नेछ, अनि हामीलाई "आफ्नो"भन्ने कुरो कति प्रिय हुँदोरहेछ त्यसको पनि पुनर्वार उद्‌बोध गराई दिनेछ।

यसै कुराको सफलतामा- ललितपुर थेना टोल निवासी लिपिविशारद एवं पुरातत्त्वान्वेषक पण्डित श्री हेमराज शाक्य ज्यूले उठाउनु भएको अथक परिश्रम उपयोगी सिद्ध जन्ने छ, यसैको आधार र क्रममा ललितपुरका अन्य एक एक देवस्थल तीर्थ, मन्दिरको इतिहास पनि प्रकाशनमा ल्याउन माग सुझा हुनेछ ।

ललितपुर, सत्यमोहन जोशी
२०१८ भाद्र १

# दुई शब्द

प्रसिद्ध देव देवी एवं पवित्र तीर्थहरु सम्पन्न विविध कलाकृतिले सुसज्जित इतिहास प्राण-धर्म प्रधान हाम्रो जन्म भूमि नेपाल देशमा प्रचलित हरेक पर्व चाडवाडहरुले एक एक ईश्वरको स्मरण दिलाउँछ । ती प्रचलित पर्वमध्ये एक प्रसिद्ध वार्षिक "श्रावण शुक्ल पूर्णिमा" ( जनाई पूर्णी ) हुन । यस दिनको पर्वमा हजारौं धर्म प्रेमी नर नारी यात्रुहरुले श्रद्धा भक्तिकासाथ ललितपुरस्थित कुम्भेश्वरको ऐतिहासिक पुष्करणी ( गौरीकुण्ड ) मा स्नान गरी श्री सर्वेश्वर भट्टारक मृत्युञ्जय कुम्भेश्वर महादेवको श्रद्धा, भक्तिले दर्शन गर्दछन् ।

परन्तु, यस पुण्यभूमि धार्मिक स्थलको ऐतहासिक महत्व दिनपर दिन लोप हुँदै गैरहेको छ । यसैले यस विषय-को "ऐतिहासिक महत्त्व र धार्मिक ज्ञान" लाभ गर्नु सकून् भन्ने शुभेच्छाले "कुम्भेश्वर-इतिहास" नामक यो पुस्तक तयार गरें ।

अनि, श्रीकुम्भेश्वर प्रतिको श्रद्धा, मेरो एक मित्र कुंभेश्वरका एक अनन्यभक्त दानरत्न श्रेष्ठको आग्रह तथा साहु० श्री बेखानाथ श्रेष्ठको उदारतामा प्रेरित भै यस पुस्तकलाई प्रकाशनमा ल्याउन सौभाग्य मिल्यो ।

प्रस्तुत पुस्तकमा कहीं कतै त्रुटि हुन गएको रहेछ भन्ने कृपया विज्ञ- सज्जनहरुले लेखकलाई सूचित गर्नु भएमा दोश्रो प्रकाशनमा उक्त भूल सच्याउन सुविधा हुनेछ ।

हेमराज शाक्य
जयश्रीविहार
ललितपुर, थैना टोल ।

२०१८ श्रावण २५
बृहस्पतिवार

# श्री कुम्भेश्वर महात्म्यम्

बौद्धग्रन्थ-स्वायम्भू पुराणान्तर्गतः—
अष्टवैतराग कथाबाट उध्दृत

अतीतकालमा, मञ्जुपट्टन सहरमा जन्मेका जम्भन स्तम्भन, मोहन, उच्चाटनादि षट्कर्म चर्यामा निपुण भएका प्रख्यात " सर्वपाल " नामक एकजना वैद्य थिए। उनलाई मञ्जुपट्टन निवासि सबै जनताले खूब प्रशंसा गरी मान्दथे। यो सर्वपाल वैद्यले कसैलाई अनेक औषधी उपचार गरी रोग निको पार्थे, कसैलाई विष खुवाएर मारी दिन्थे। आफ्नो इच्छानुसार जथाभावी गरेर हिड्ने नै उसको बानी थियो। उसले गरेर हिडेको अनेक कुकर्म र अत्याचार देखी मंजुपट्टन सहरका अधिपति महाराज पनि अत्यन्त चिन्तित भए, अन्त्यमा यो कालस्वरुप वैद्य सर्वपाललाई पक्रे र जेलमा थुनी राख्नु भन्ने राजाबाट हुकूम भयो। उता यो समाचार चाल पाउने वित्तिकै राजदण्डबाट उम्कनलाई सर्वपाल वैद्यले वैराग्यको भेषधारण गरे र एउटा मृत्तिका कुम्भसाथमा लिएर उसले आफ्नै जन्मभूमिलाई त्याग गरे। आखिरमा

रात साँझ गरी उ नेपाल देशमा शरण आयो । अनि यस देशको वाग्मतीतीर्थ समीपमा विश्राम गरी ती वैद्यले यसरी आफुले गरेको धेरै कुकर्मको अनेक पश्चाताप गरे । उसले मन मनै भन्न लाग्यो "धिक्कार ! मेरो जन्म ! ८४ लाख योनि मध्ये सर्वश्रेष्ठ उत्तम मनुष्ययोनिमा जन्म भएर पनि मैले यस्तो अत्याचार पाप कर्म गरें । अब, यी सबको फलस्वरूप यमद्वारका यमपाशबाट दण्ड सजाय पाई अवीचि नरकमा जन्म लिन जानु पर्ने त होला नि ।" त्यसपछि उसले आजै देखि सत्कर्म धर्मचर्या गरी पापकर्म अत्याचारबाट परिमुक्त हुनु पऱ्यो भनी सम्यक् विचारमा चिन्तना गर्न थाल्यो ।

यसको प्रायश्चित स्वरुप वज्रपाणि बोधिसत्वको समक्ष आफ्नो पापकर्म परिशुद्ध गर्नको निमित्त उ यस किसिमबाट साधनकर्ममा नियुक्त भए । वज्रपाणि बोधिसत्वलाई एक चित्तले स्मरण गरी उसले आफ्नो सामुन्ने एक कुम्भ कलश स्थापना गरी भावना र आराधना गर्न थाल्यो । जब यस्तै प्रकारले एकचित्त पूर्वक जप ध्यान पूजा गर्दै रहे, बाह्रवर्ष बिति सकेपछि एकदिन यस साधन कर्मको पुण्य प्रभावले नेपाल क्षेत्र वाग्मती तीर्थसंगै योग ध्यानमा सुदृढ भएका सर्बपाल वैद्यलाई उद्धार गर्नको निमित्त सुखावती भुवनमा विराजमान भएका श्रीवज्रपाणि बोधिसत्व त्यस साधन कुम्भमा प्रवेश भएर सुप्रसन्न भयो । तत्क्षणैमा ती साधन कुम्भ विष्फोट भएर कुम्भतीर्थ उत्पति भयो । त्यही शुभ मुहूर्तमा वज्रपाणि बोधिसत्वले डमरु, वज्र, घण्ठ त्रिशुल लिएर व्याघ्रचर्म लाएर अक्षोभ्य तथागत शिरमा धारण

गरेर जाज्ज्वल्यमान् ज्योतिरूप प्रकाश गरेर ती भक्त सर्वपाल वैद्यलाई दर्शन दिनु भयो । त्यही शुभ घडिमा ती सर्वपाल वैद्यले मनमा अति हर्षमान गरी परम बल गुण ज्ञानले परिपूर्ण भएका वज्रपाणि बोधिसत्वलाई देखेर उहाँको श्रीचरण कमल पादुकामा प्रदक्षिण गरी इच्छानुसार अनेक प्रकारका उपचार सहित पूजा भाव गरी भक्ति पूर्वक स्तुति गरे ।

यस किसिमबाट भाव भक्ति पूजा स्तोत्र गरेको देखेर सर्वपाल वैद्यलाई बोधिसत्वले यसरी बोध गर्नु भयो "हे सर्वपाल वैद्य ! वरूपदले सहित भएका अति प्रसिद्ध यस तीर्थमा उदमुखो नाम राजा एकजना आएर यस कुम्भतीर्थमा स्नान गर्न आउने छ हे सर्वपाल वैद्य! तिमीले स्थापना गरेको कुम्भ कोटिकोटि जपगरेको पुण्यबाट यस ठाउँको "कोटि स्थान" भनी नाम प्रसिद्ध हुनेछ ।" वज्रपाणि बोधिसत्वको यत्ति भविष्य व्याकरण सुनी सकेपछि सर्वपाल वैद्यले प्रार्थना गर्न लागे "भो नाथ वज्रपाणि ! हजुर सदाकाल यहीं विराजमान होईबक्सियोस् ।" यति प्रार्थना गरेको सुनी फेरि बोधिसत्वले भक्तलाई प्रत्युत्तर दिनु भयो— "भो सर्व पाल वैद्य ! म यस स्थानमा बस्न योग्य छ, परन्तु प्राणीहरूलाई उद्धार गर्नको निमित्त एकै ठाउँमा मात्र न बसीकन लोक उद्धारको लागी यत्र तत्र अनेक देश देशान्तरमा निरीक्षण गर्न जानु पर्छ, तदर्थ तिमी जस्तो श्रद्धालु भक्तहरुको उपर भावभक्ति गर्नलाई यस शिलातलमा अक्षय पुण्य भण्डार स्वरुप मेरो ज्योतिरूप प्रवेश गराई दिएको छु । यही शिलातलमा मलाई संझेर जसले पूजा भाव गर्लान् उस-

लाई निश्चय पुण्यफल प्राप्त हुनेछ। यति भनी बोधिसत्व अन्तर्ध्यान भए। तन्दतर यही ठाउँमा सर्वपाल वैगलं आजीवन भर सेवा भक्ति गरी जीवनमुक्त गरे। अतएव, यस कुम्भेश्वर वैतराग पुण्यभूमिमा उसले स्नान दानादि धर्म कर्म गर्छन्, अवश्य उसको ठूलो उद्धार हुने कुरो निश्चय छ।

---

मुद्रित-हिमवत्‌खण्ड १३७ अध्यायबाट उध्दृतः—

## श्री कुम्भेश्वर-वर्णनम्

विरुपाक्षले नेमुनिसंग प्रार्थना गरे—

हे मुनिहरुमा सिंह समान् भएका, हे ज्ञानका ज्योति स्वरुप मुनि म हजूरबाट यी (सर्वेश्वर) लिङ्गको महात्म्य सुन्न चाहन्छु साथै गौरीकुण्डको र नागह्रदको विशेषता पनि सुन्न चाहन्छु।

भो विरुपाक्ष! पहिले यो गहिरो कुण्ड ब्रह्माले सृष्टि गरेका हुन। कश्यप ऋषिले पनि यहाँ लोक सृष्टिको इच्छाले तपस्या गरे। यो अगाढ कुण्डमा पार्वतीले पनि आराधना गरीथिन्। त्यसैबेला कुण्डबाट यो लिंङ्ग उत्पन्न भयो।

पहिले, यहाँ नीन्दनीय रूप हुनाले बाबु आमाहरुद्वारा त्याग गरिएको किरताधिपतिकी छोरी विरुपा यहाँ रहन्छिन्। सोह्रवर्षीय भएतापनि तिनी विरुपालाई विवाह गरी सकेपछि पनि पतिले त्याग गरेर विरक्त भए। मेरो यो अङ्गलाई जन्तुहरुले खाउन् भन्ने निर्भर गरेर लाजले पीडित भएकी ती

विरुपाले वनमा प्रवेश गरिन् । त्यसपछि बिचमा शिवलिङ्ग रहेको श्रेष्ठ गङ्गाको निर्मल पानी भएको यो कुण्डलाई तिनीले देखिन । ती विरुपाले कार्तिक पूर्णिमाको दिन मध्याह्नमा निराहार भएकी छँदी अंजली बाँधी शिरले शिवलिङ्गलाई नमस्कार गरेर प्राण त्याग्न इच्छा गर्दै विरुपा पानीमा हाम फालिन । त्यसपछि चञ्चल पानीको तरङ्गले तुरन्त तिनीलाई किनारामा फेंकी दियो । र एउटा म्लेच्छले तिनीलाई पानीबाट बाहिर निकाली शान्त गरायो । ती विरुपा त्यो तलाउमा स्नान गरेर दिव्य सुन्दरी भइन् र जलमा परेको आफ्नो छायाँ देखेर तिनी खूब खुसि भइन ।

नारदबाट यो समाचार सुनेर इन्द्र त्यहाँ आए र तिनको अत्यन्त अद्भुत सुन्दर रूपलाई देखेर मुग्ध भए । अनि, तुरन्त इन्द्रले अत्यन्त सुन्दरी तिनीलाई ग्रहण गरे । तिनी किराताधिपतिकी पुत्री धेरै कालसम्म इन्द्रको अर्द्धासनको अधिकारिणी भइन ।

हे विरुपाक्ष ! फेरी, एकजना दुष्ट मनुष्य पनि त्यहाँ मुक्त भएको कुरो सुनाउँछु । प्राचीनकालमा मध्य प्रदेशमा गृहस्थाश्रममा रहेका एउटा कुनै महापापी रहन्थ्यो । ब्राह्मणहरुमा अधम भएको त्यो पापी सधैं चोरी वृति गरेर खान्थ्यो त्यो चाण्डाल आफ्नो पूर्व जन्ममा गङ्गाकोतीरमा मरेको थियो । यसैले यो यस जन्ममा ब्राह्मण कुलका जाति मात्रको गरीष्ट भएर जन्मेको थियो । केही दिन पछि त्यो ब्राह्मणले झगडा गरी आफ्नी पत्नीलाई लात र मुक्की हिर्काई हिर्काईकन मारी दियो । तिनकी ब्राह्मणी पनि पिटाईको असह्य

पीडालेगर्दा प्राण त्याग्दै भइन । त्यसपछि त्यो ब्राह्मण मरेकी ब्राह्मणीलाई छोडेर घरबाट निस्क्यो र अनेकौं देशहरु र नदीहरुलाई नाघ्दै त्यो गङ्गादास यस शिवलिङ्ग भएको ठाउँमा आई पुग्यो । बटुवाहरुको मुखबाट पशुपति शिव-जीको प्रशंसा सुनेर त्यो अधम ब्राह्मण गङ्गादास यसै वनमा आएर बस्यो । एकान्त स्थानमा एक्लै धान्यद्वारा जीविका चलाउँदो छँदो त्यो गङ्गादास जबर्जस्ती र चोरीद्वारा अर्काको धन हरण गरी एकान्त स्थानमा खान्थ्यो । त्यस्तो गङ्गादासको त्यहाँ मर्ने समय आई पुग्यो । हे क्षुद्र ब्राह्मण ! ' आज तेरो काल ! आईरहेको छ, अतः तँ यस लिङ्गको नजिक जा ' भन्ने यो वचन कुनै मुनिको मुखबाट श्रवण गरेर त्यो ब्राह्मण ज्ञानले युक्त भयो । त्यसमा ज्ञान आयो । मुनिको यस्तो वचन सुनेर त्यो ब्राह्मण गङ्गादास लिङ्गको नजिकै गयो । त्यसै वखत माघ कृष्ण चतुर्दशीको दिन यमदूतहरु त्यहाँ आई पुगे । चित्रगुप्तको आज्ञाबाट आएका एक हातमा पाशो र अर्को हातमा दण्ड लिएका डरलाग्दा भयङ्कर मुख भएका ती यमदूतहरुलाई त्यो ब्राह्मणले देख्यो । यमदण्डले तर्साउँदै पाशो लिएर आईरहेका ती यमदूतहरुलाई देखेर त्यो पापी ब्राह्मणले डराएर शिवलिङ्गलाई दुई हातले खूब जोडसित अंगालो हाल्यो । शिरले शिवलिङ्गमा घषण गर्दै डरले काम्दो छँदो त्यो गंगादास ब्राह्मण " हे प्रभो ! हे शिव ! मलाई रक्षा गर्नु होस् । हे सर्वेश्वर प्रभो ! म हजुरमा आफुलाईनै अर्पण गर्दछु" भन्दै लिङ्गको नजिकै आई पुग्यो । हे विप्रेश विरुपाक्ष यमदण्डले तर्साउँदै पाशो उठाउदै ती दूतहरुले अब के गर्ने

अब के गर्ने ? भनी सल्लाह गर्न थाले, लिङ्गको नजीकैबाट त्यसलाई समात्नु पर्दछ भनी परस्परमा सल्लाह गर्दै ती दूतहरूले भने " हे ब्राह्मण ! यहाँ आईज, तैंले पापले कलुषित देह लिएर त्यहाँ बस्नु हुँदैन । यदि आउँदैनस् भने यो दण्डले, हामी तँलाई खूब पिट्छौं । अहिले को मूर्खले तँलाई रक्षा गर्ला ? यति भन्दै खूब प्रचण्ड रीसले त्यस ब्राह्मणलाई महापाश फेक्ना भए । त्यसपछि पाशोले त्यसलाई लिङ्गको साथै बाँधे त्यो लिङ्ग र ब्राह्मणलाई बाढिएको पाशो एकदम सित छिन्यो । त्यस्तो देखेर दूतहरु आश्चर्यमा पर्दा भए फेरी रिसाएर त्यसलाई मार्न तयार भए । 'तँलाई मार्दछौं' भन्दै दण्डले तर्साउन लागे । त्यसपछि भगवान् शङ्करले वायु रूप भएर ती ब्राह्मणको कानमा भन्नु भयो र त्यसले गरेका सम्पूर्ण पापहरू ग्रहण गरी दिनु भयो। भगवान शङ्करजीले भन्नु भयो " हे ब्राह्मण यी यमदूतहरुबाट न डराऊ ! हे ब्राह्मण ! आज मेरो शुभ आशीर्वादबाट तिमी मृत्युको डर छोडि देऊ ।" त्यसपछि आकाशबाट शिवजीका प्रमथगणहरुले यमदूतहरुसित रिसाएर भन्न थाले । प्रथमहरु भन्दछन् हे दण्डधारी हे अविवेकी चित्रगुप्तकादास ! के तिमीहरुको बुद्धि यस्तै हो, हे मूर्ख ! यस्ले सर्वेश्वर महालिंगको आश्रय लिएको तिमीहरूले देखेनौ ? यो ब्राह्मण शिवलिङ्गको स्पर्श गर्ना साथ एकै क्षणमा ती सब पाप कर्म देखि मुक्त भयो । श्री भगवान शिवजीले यसलाई विशेषतः चिरञ्जीवित्व प्रदान गर्नु भयो ।

त्यस बखतमा यमदूतलाई मार्न इच्छा गर्ने भएका

नन्दिलाई उद्देश्य गरेर त्यसको विरोधमा आकाशबाट आकाशवाणी भयो । अशरी मन्दछन् । हे नन्दि ! त्रिशिर ! शंकुकर्ण ! हे भृङ्गी ! तपाईंहरूले यी यमदूतहरूलाई कहिल्यै पनि मार्नु हुँदैन, नमार्नु होस हे आर्य ! सम्पूर्ण लोकलाई नियममा राख्नको लागी त्यसैको गौरवबाट मैले पहिले काललाई वरदान दिएको थिएँ । अतः अब काललाई जितेको छँदो यस ब्राह्मणलाई पनि तुरन्त कैलाश पुऱ्याओ । यो गङ्गादास ब्राह्मण त्यहाँ सधैं मेरो पार्श्वगणहरूको नायक भएर रहला । यसपछि शिवगण प्रमथहरूले शिवजीका कृपापात्र भएका ती गंगादास ब्राह्मणलाई ती दूतहरूको अगाडि नै पुष्प विमानमा राखेर नाना उत्सव गर्दै कैलाश लगे ।

जुन धर्म प्रेमी सज्जनले मृत्युञ्जय भएका सर्वेश्वर कुम्भेश्वर नामक महालिंगलाई गौरीकुण्डमा स्नान गरेर पूजा गर्ला त्यसलाई निश्चय नै शिवपद प्राप्त हुनेछ ।

## कुम्भेश्वरको ऐतिहासिक पृष्ठभूमि

कुम्भर्षि मुनि मुख्येन यत्तीर्थेऽपि तपःकृतम् ।
आराधितो महादेव स्तेन कुम्भेश्वरः स्मृतः ॥

प्राचीनकालमा कुम्भर्षि नामक ऋषिले यस गौरी तीर्थ भन्ने ठाउँमा बसी तपस्या गरे । यिनै ऋषिको श्रद्धा भक्ति

को आराधनाद्वारा सुप्रसन्न भएका महादेवलाई उसै बेला देखि 'कुम्भेश्वर महादेव' भन्ने गरी आएकाछन् ।

अनि,नी तीर्थ गौरीकुण्डलाई पनि कुम्भेश्वर तीर्थ भन्ने चलन भयो । परापूर्वकालमा ललितारण्य भन्ने ठूलो जङ्गलको बीचमा विशाल एवं भयङ्कर अथाह दह थियो । त्यो दह परिवर्तन हुँदै वर्तमान समयमा साधारण पोखरीको रूपमा खडा छ । पहिले यो पोखरीमा कुनै कारणवश हिलो सोह्रदा धेरै पुराना नाग, गणेश, शीतलादेवी, नारायण, गौरी, वसाहा कृतिमुख एवं आगमदेवता आदिका मूर्तिहरु फेला परे जुन अद्यापि सुरक्षित नै छन् ।

प्रतिवर्ष श्रावण शुक्ल चतुर्दशीको दिन राती सर्वेश्वर भट्टारक कुम्भेश्वर महादेवको सुवर्णमय सुन्दर मूर्ति यहाँको ऐतिहासिक पोखरीको माझमा सुन्दर खट बनाई एक रात विराजमान गराइन्छ । भोलिपल्ट जनाई पूर्णिमाको दिन बिहान सवेरै देखि यहाँ स्नान गर्नको निमित्त हजारौं नर नारी यात्रिगणहरु भेला हुन्छन्, श्री सर्वेश्वर भट्टारक कुम्भेश्वर महादेवलाई पूजा गर्दछन् । अनि अपरान्हमा त्यस पोखरीबाट सोही मूर्तिलाई उठाई मन्दिर प्रवेश गराइन्छ ।

आज यो सर्वेश्वर मृत्युञ्जय महादेवको मन्दिर धेरै कलाकृतिले भरिएको प्राचीन ललितपुरको केन्द्रीयस्थल मङ्गल बजारको उत्तर भाग शङ्करतीर्थ ( शङ्खमोल ) को समीपवर्ति दक्षिण पार्श्वस्थित एक समस्थलभूमि पितृतीर्थ र गौरीतीर्थ नेर सुशोभित भै रहेको छ ।

यो मन्दिर एक तह पेटीको उपरी भागमा चारै दिशा

तर्फ तीन तीन द्वार सहित भै सुन्दर कलापूर्ण स्तम्भ र तोरण राखी शिव र शाक्तगण तथा अन्य देव देवी प्रभृतिका तुनाल हरुले सुसज्जितभै पञ्चछत्रको प्रमाणले ( पाँचतले छाना ) बनेको छ। यसको सर्वोपरी भागमा सुनको मोलमा युक्त छाना छ। यसको शिरो भागमा डमरु, त्रिशूल तथा छत्रसहित गजुर छ। यो विशाल भव्यरूप सुन्दराकार कलापूर्ण कुम्भेश्वर मन्दिर अद्वितीय छ।

यस ऐतिहासिक मन्दिरको चौतर्फी शास्त्रोक्त विधिवत् प्रमाण मिलाई बनाएका अनेक प्रसिद्ध देव देवीका मूर्ति, तीर्थ र कुण्ड, ढुंगेधारा, पुष्पोद्यान बगैंचा, धर्म लेख शिला पत्र, तामापत्र, स्वर्णपत्र आदि ( पूर्व लिच्छविकाल देखि लिएर प्रारम्भिक मल्लकाल एवं वर्तमान शाहकाल पर्यन्तको ) शोभायमानभै राखेकाछन्। यी अभिलेखहरुमा गुप्त, कुटिला प्राचीन नेवारी, प्राचीन देवनागरी, रञ्जनारूप नेवारी, साधारण नेवारी तथा भोटे र अंग्रेजी लिपिसमेत अद्यापि देखा पर्दछन्।

यस ऐतिहासिक पुण्यभूमि कुम्भेश्वर मन्दिरको विषयमा इतिहासप्राण धर्मलेख-शिलापत्रमा निम्न लिखितानुसार वर्णन गरी राखेको पाइन्छ।

५५० साढे पाँचसय वर्ष अगाडि कुम्भेश्वर महादेवको मन्दिर केवल छाप्राले मात्र बनाई राखिएको एक साधारण देवल थियो। यसतो देवललाई विशालस्तर कलापूर्ण ढङ्गले निर्माण गर्ने एउटा यसतो संयोग प्राप्त भयो। यसको वर्णन यस प्रकार छ।

ललितपुर धाहुँसिको गृहस्थान निवासि परम पुण्य अभिलापेच्छुक समृद्धिशाली दानपति जयभीम नामक एक महाजनकी धर्मपत्नी ज्येठी स्वास्नी शान्ता सुचरित्रा शीलवती अनन्तलक्ष्मीलाई धेरै दिन देखि ज्वर रोगले सताएको थियो। असह्य पीडा भै उनी मुर्च्छासमेत भइन्। यसतो असह्य वेदना सागरमा निमग्न भई रहेको आफ्नी श्रीमतीको महा-तुरवाट परिमुक्त भै आरोग्य सुख जीवन प्राप्त होस भन्ने शुभ कामना दृढसंकल्प गरी श्री सर्वेश्वर भट्टारक मृत्युञ्जय सदा-शिव महादेव कुम्भेश्वरकोप्रति अपार श्रद्धाको प्रतीक विशाल रूप एक कलापूर्ण सुन्दर मन्दिर बनाई दिनेछु भनी ती लोग्ने चाहींले सत्य अधिष्ठान ( भाकल ) गरे। तथापि ज्वर रोग अलिकति पनि शान्त नहुँदै आखिर अनन्तलक्ष्मी परलोक भई गईन्।

जव, अनन्तलक्ष्मीले सकल परिवारलाई परित्याग गरी प्राण छोड़ेर गइन, वियोगावस्था देखि, सान्है मनमा विरक्त भएका तिनका लोग्नेले यसरी विचार गन्यो कि,— " यस अनित्य संसारमा एकदिन अवश्य सबै वियोग भएर जानु पर्ने रहेछ। असार संसारमा सत्सार धर्म मात्र सहारा सिवा यत् अरु कुनै रहेन छ। " भनी मनमा यति कुरा समझी आफुले गरेको भाकल सिद्ध गर्नको निमित्त उसले स्वभार्या अनन्तलक्ष्मीको दिवंगत स्मृतिमा परम शान्ति प्राप्त होस् भन्ने शुभ हेतुले भव्यरूप कुम्भेश्वर मन्दिर सु-निर्माण गरे।

कुम्भेश्वर मन्दिर निर्माण-कार्य सम्पूर्ण भएको शुभ उप-

क्ष्यमा सुवर्णरत्न जडाउने सहित भएको चतुर्मुखकोपसमेत बनाई चढाए। राजा जयस्थिति मल्लको पर्यायमा क्ष्योरस्तु नेपाल संवत् ५१२ वैशाख मास कृष्णपक्ष षष्ठी गरकरण विश्व मुहूर्त श्रवण नक्षत्र ऐन्द्रयोग आदित्यवारको शुभ दिन लक्षाहूति होम गरी कान्छी स्वास्नी अभयलक्ष्मी छोरो अभय देव भाई जयतेज आदि सकल परिवार समूहले सम्पूर्ण प्रतिष्ठा कार्य सुसम्पन्न गरे।

केही शताब्दी पछि, कला प्रेमी शान्तिप्रिय, धर्म, संस्कृतिलाई रक्षा गर्ने राजर्षि महाराज सिद्धिनरसिंह मल्लका सुपुत्र श्री निवासले यस कुम्भेश्वर मन्दिरलाई सुनमाथि सुगन्ध भने झैं अझ कलापूर्ण गरी विशालत्वर रूपले तला बढाएर पाँचतले गरी बनाई दिए।

परिवर्तनशील संसारमा प्राकृतिक प्रकोपबाट भैरहने काल कराल विकराल शक्तिले गरी ने.सं. ६२८ ज्येष्ठ शुक्ल दशमीका दिन ठूलो वेगले भूकम्प भै सोही मन्दिर तलैसम्म बिग्रिएकोले राजाका हजूरमा बिन्ति चढाई, अनुमति लिई पाटन धौगाल टोल बस्ने हनुमन्त सिंह अमात्यका चार दाजु भाईका पूर्ण सहयोगले ने.सं. ९२६ ज्येष्ठ कृष्ण एकादशीको दिन उक्त मन्दिरलाई पुनः जीर्णोद्धार गरी दिए।

यस मन्दिरको शोभा बढाउनको निमित्त वि.सं. १९८७ सालमा श्री ३ महाराज भीमशम्सेरबाट बिग्रीरहेका देवालय मर्मत गर्न यस स्थललाई अत्यन्त मनोहर सुन्दरस्थान तुल्याई दिए।

ने..सं ९८८ साल पछि एकसय पच्चीस वर्षबाद ९० सालको महाभूकम्पले पनि यस विशालस्तर पाँचतले मन्दिरलाई ध्वस्तपारी दिए। त्यस अवस्थामा पनि महाराज जुद्ध शम्सेरले (भूकम्प पीडित उद्धार कोष) बाट सहायता प्रदान गरी पूर्ववत् यो मन्दिर तयार गरी दिए।

सर्वेश्वर भट्टारक मृत्युञ्जय सदाशिव महादेव कुम्भेश्वर को आदर्शप्रति राजा, प्रजा, अमीर, फकीर, ऋषिमुनि, याचक भिक्षुक र धार्मिक, पापिष्ठ आदिले पनि बखत बखतमा भाव भक्त गरी आएको अनेक श्रद्धाका प्रतीक विविध कीर्ति एव स्थिति व्यवस्थाहरु अद्यापि मौजूद भएको कुरो स्थानीय अभिलेख शिलापत्रादिहरूबाट आजसम्म पनि हाम्रो सामुन्ने वर्णन गर्दैछन्।

---

## ऐतिहासिकस्थल कुम्भेश्वरका चारकिल्ला भित्र रहेका विविध अभिलेखहरुको संक्षिप्त–परिचय

### कुम्भेश्वर मन्दिरको दक्षिणलङ्को पेटीमा—

यो शिलालेख पूर्वलिच्छविलिपि (गुप्ताक्षर)बाट लेखिएको केवल एक हरफ मात्र भएको छता पनि टुट् फूट्

देखिन्छ । जसमा स्पष्ट देखिएका अक्षरहरू—

ॐ स्वस्ति परम पुण्य !) कारण⋯भवत⋯तिष्ठानाद्स्ति परमम्पुण्य मितिमत्वा भगवन्तन्त्रैलोक्यगुरुम् ।

### कुम्भेश्वर मन्दिरको उत्तरलङ्को पेटीमुनिको टुटेधारामा

राजा श्री रुद्रदेव शासनकालमा संवत् १६१ कातिक शुक्ल अष्टमीको दिन जगत् आनन्दको कारण यो टुटेधारा (जलधेनु जस्तै) विधिपूर्वक स्थापना भयो भन्ने उल्लेख छ ।

### उन्मत्त भैरवको पेटीमारहेका शिलापत्रमा—

राजा जयस्थिति मल्लको शासनकाल ने.सं ५१२ वैशाख कृष्ण षष्ठी आदित्यवारको दिन श्री सर्वेश्वर भट्टारक कुम्भेश्वर को प्रति जयभीम नाम महाजनले आफ्नो धर्मपत्नी ज्येठी स्वास्नी अनन्तलक्ष्मीकी दिवंगत आत्माको स्मृतिमा भव्यरूप मन्दिर निर्माण गरी दिएको उल्लेख छ ।

### मूलद्वार अगाडि स्थापित चैत्यको शिलापत्रमा–

राजा जयकीर्ति मल्लको राज्यकाल ने. सं. ५३४ वैशाखमा श्री योखा महाविहारका सुवर्णकार जसराजजुले भार्या जयलक्ष्मीकै मृतात्माको शान्ति कामना गर्दै मसाहिटी ढुंगेधारा जीर्णोद्धार एवं चैत्य भट्टारक देव प्रतिष्ठा गरेको उल्लेख छ ।

### गौरीकुण्ड भित्र मूर्तिको पादपीठमा–

ने. सं ५५६ आषाढ शुक्ल नवमीको दिन श्री कुम्भेश्वर

उपचारिक लुन्राज श्रेष्ठ र भार्या जितलक्ष्मीले हरिशङ्कर मूर्ति स्थापना गरेको उल्लेख छ ।

### ईशानकोणनेरको विष्णु मन्दिर भित्र–

ने. सं. ५७१ भाद्रव कृष्ण अष्टमीको दिन श्री कुम्भेश्वर उपचारिक लुनराज श्रेष्ठ र भार्या जीवनलक्ष्मी सहितले श्री महालक्ष्मीदेवी प्रतिमा स्थापना गरेको छ ।

### शीतलादेवी लङ्को शिलापत्रमा–

राजा श्रीनिवास मल्लको उदयकालमा ने. सं ७८१ कार्तिक कृष्ण एकादशी नवमी शुक्रवारको दिन इखाछें टोल-का काशीराम श्रेष्ठले शिवप्रीतिको निमित्त भवानी शङ्कर, एकादशरुद्र बनाई राखि दिए। मूल देवताको संमुख र ईशान कोणमा, आग्नेयकोणमा श्री पञ्चवक्त्र महादेव स्थापना गरे भन्ने उल्लेख छ ।

### नैऋत्यकोणनेरको शिलापत्रमा -

राजा श्रीनिवास मल्लको पर्यायमा ने, सं. ७९३ मार्गशिप शुक्ल पंचमी बृहस्पतिवारको दिन कालएडवाहार बस्ने सूर्यराम मुल्मी श्रेष्ठले आग्नेयकोणमा सूर्येश्वर महादेव फट्किलिङ्ग परमेश्वर स्थापना गरी सुवर्ण चतुरमुख मूर्ति बनाइ सुवर्ण तीनतले छत्र चढाई जीर्णोद्धार सहित यज्ञकर्म गरी पूजाविधिलाई आवश्यकीय सामाग्रीहरू समेत समर्पण गरेको उल्लेख छ ।

## नैऋत्यकोणनेरको दोश्रो शिलापत्रमा--

राजा योगनरेन्द्र मल्ल अभ्युदयकालमा ने.सं. ८२१ कार्तिक पूर्णिमाको दिन राजा श्री योगनरेन्द्र मल्लले नै पहिलेको लोप हुन लागेको गुठी पुनः सुव्यवस्था गरी श्री सर्वेश्वर भट्टारक देवता, नारायण तथा श्री हरिसिद्धि देवीका पूजाको निमित्त जग्गा राखी दिएको उल्लेख छ ।

यसै सिलापत्रको अन्तिम भागमा कोनिह्म टोल बस्ने पात्रवंश रामशंकर बाबुले सर्वेश्वर भट्टारक देवपालो बस्नलाई घर र आयस्ताको लागी जग्गा समेत राखिएको उल्लेख छ ।

## कुम्भेश्वर भण्डार तामापत्र-

राजा योग प्रकाश मल्लको समयमा ने.सं. ८४१ जेष्ठ कृष्ण अष्टमीको दिन कोनिह्म टोलका रामशंकर बाबुको इच्छानुसार सुनको मोलमा शीतला देवीको प्रतीमा निर्मित्त गरी चढाई साथै पूजाको निमित्त जग्गा र गुठी स्थापना गरेको उल्लेख छ ।

## नैऋत्यकोणनेरको तेश्रो शिलापत्रमा-

ने० स ८४६ श्रावण कृष्ण तृतीया वृहस्पतिवारको दिन कोनिह्मका रामशङ्कर बाबुले श्रीधरनारायण प्रतिमा बनाई श्री विश्वेश्वर प्रीति श्रीसर्वेश्वर पूजाको निमित्त जग्गा राख दिएको उल्लेख छ ।

## सुवर्णमूर्ति बसाहाको पादपीठको स्वर्णपत्र

राजा जयविष्णु मल्लदेवको समयमा ने० सं० ८५५ ज्येष्ठ कृष्ण अमावासी सोमवारको दिन श्री सर्वेश्वर भट्टारक सदाशिव सुप्रीतिको निमित्त सुनको मोलमा बसाहा, राजा जयविष्णु मल्लले नै समर्पण गरी दिएको उल्लेख छ।

## कुम्भेश्वर मन्दिरको अगाडि रहेको ठूलो सतल-

कुम्भेश्वर मन्दिर अगाडि रहेको ठूलो धर्मशाला सतल ने०सं० ६०० वैशाख शुक्ल अक्षय तृतीयाको दिन काठमाडौं पोड़े टोलका द्रव्यसिंह भारो प्रतापलक्ष्मी, चन्द्रलक्ष्मी, श्रीनरहरि प्रसाद, शिवप्रियाकुमारी, सेरबहादुर यिनीहरुको श्रद्धाले यो कलापूर्ण सुन्दर सतल दुई नाले २ तले भएको ११ कवलको प्रमाण बनाई १३ वटा झयाल राखी प्रतिष्ठा गरी दिएको र साथै श्री कुम्भेश्वर मन्दिरमा पनि जीर्ण भएकोमा मर्मत गरी दिवंगत प्रतापसिंह सहगामिनी भार्या चिकिढिलक्ष्मी यी दुई मृतात्माको शान्ति कामना गरी लक्ष्मीनारायण मूर्ति समेत स्थापना गरेको उल्लेख छ। यसको प्रसङ्गमा यस कुरा पनि दर्शाएको छ– श्री मत्स्येन्द्रनाथ जात्रा, इन्द्रजात्रा, श्रावण शुक्ल चतुर्दशी, माघकृष्ण चतुर्दशी शिवरात्री इत्यादि उत्सव दिन पर्व चलाउनलाई आयस्ताको निमित्त जग्गा २० रोपनि समर्पण गरिएको कुरा झल्किन्छ।

## सुनको मोलमा भएको बसाहामुनिका शिलापत्रमा-

राजा विष्णुमल्लले स्थापना गरिएका सुनमोलमा बसाहा-

श्री ५ रणबहादुर शाहदेवको शासनकालमा, चोरी भएर श्री ५ रणबहादुर शाहदेवले पूर्ववत् सुवर्ण बसाहा मूर्तिपुनर्निर्माणको निमित्त शुभाज्ञा बक्सेको साथै आफैले पनि सुन तोल १ स्मेत प्रदान गरी बक्सी अन्य यस शुभ कार्यमा सहयोग दिने र श्रद्धा चन्दा प्रदान गर्ने महानुभावहरुको शुभ नामावलि र ठेगाना समेत अङ्कित गरी ने०सं० ६०३ वैशाख शुक्ल अक्षय तृतीयको दिन पुनः स्थापना गरी दिएको उल्लेख छ ।

नैऋत्यकोणनेरको चौथो शिलापत्रमा

ने०सं० ६२८ ज्येष्ठ शुक्ल दशमीको दिन ठूलो वेगले भूकम्पभै श्रीसर्वेश्वर कुम्भेश्वर मन्दिर ढलैसम्म बिग्रिएकोले राजासंग विन्ति चढाई अनुमति लिएर ध्वपगाल येतावासित अमात्य हनुमन्त सिंह श्रेष्टको चार दाजु भाई सहितभै ने.सं. ६२६ ज्येष्ठ कृष्ण एकादशीको दिन जीर्णोद्धार गरी प्रतिष्ठा गरेको भन्ने उल्लेख छ ।

कुम्भेश्वर पोखरीको पर्खालमा

श्री ५ गीर्वाणयुद्धविक्रम शाहदेको उदयकालमा ने. सं ६३१ वैशाख शुक्ल द्वादशी आदित्यवारको दिन ध्वपगाडल टोलका अमात्य हनुमन्द सिंह, धनसिंह, शिवसिंह, लक्ष्मीनर सिंह श्रेष्ट यति चार फुकीजको समुहले श्री सर्वेश्वर भट्टारक कुम्भेश्वर पोखरी जीर्णोद्धार एवं सोही पोखरीको ढुंगेधारामा सुनमोलमा धारा× र उमा महेश्वरको× मूर्ति समेत प्रतिष्ठा गरेको भन्ने उल्लेख छ ।

× यी सुनको मोलमा धारा र मूर्ति २०१० मा चोरी भयो ।

## कुम्भेश्वर मन्दिर-मूलद्वार माथिको तामापत्रमा-

श्री ५ गीर्वाणयुद्धबिक्रम शाहदेवका पालामा ने.सं ९३५ श्रावण पूर्णिमाको दिन वाग्मती पूल बस्ने अमात्य हनुमन्त सिंह. भाजुधन,सदाशिव र लक्ष्मीनृसिंह यी चार फुकीजहरु-को शुभेच्छाले श्रीमृ युञ्जय सर्वेश्वर मन्दिरको श्रीशोभा बढाउन खातिर सुवर्ण तोरण द्वारसमेत चढाई दिएको उल्लेख छ ।

## कुम्भेश्वर मन्दिरको ठूलो घण्टामा-

राजा योगनरेन्द्र मल्लले ने.सं, ८१६ श्रावण पूर्णिमाको दिन श्री ३ सर्वेश्वर महादेवलाई घण्ठा चढाए। पछि १८५६ मार्गशिर्ष शुक्ल एकादशीको दिन श्री महारानी सोम प्रभावती देवीको पुत्र श्री रणद्योतशाह. श्री शम्सेर सहितले यो घंठमा १० धार्नि धातु थप गरी पुरानोलाई नयाँ तुल्याई शोभापारी दिए ।

## कुम्भेश्वर भण्डार भित्रको तामापत्रमा

श्री ५ गीर्वाणयुद्धविक्रम शाहदेवले श्री सर्वेश्वर भट्टारक प्रति श्रद्धा प्रकट गरी धेरै जग्गा जमीन र गुठी समेत राख दिई, १८५६ ज्येष्ठ वदि अष्टमीको दिन समर्पण गरी दियो ।

## कुम्भेश्वर मन्दिरको मूलद्वारको पित्तले दैलोमा

श्री ५ त्रिभुवनको पालामा वि सं. १९८१ भाद्रव सुदि १५को दिन दौंवहाळ टोलका अमात्य जीतुगोविन्दले मन्दिर-को भित्री भागको चारै दिशाको द्वारमुनि दैलोमा पित्तल

छापिएको ।

### बङ्गलामुखी स्थान भित्रको शिलापत्रमा

वि.सं. १९८८ सालमा श्री ३ महाराज भीमशम्सेरबाट श्री बङ्गलामुखी स्थान भित्र भित्तामा टायलले छापी चाँदीको द्वार तोरण सहित गरी देवल बनाई दिएको ।

### कुम्भेश्वर मन्दिरको ध्वजामा उल्लिखित

श्री ५ त्रिभुवनको शासन कालमा ने.सं. १०६१ वैशाख शुक्ल अक्षयतृतीयाको दिन हागल टोल विज्यापुर्गुलि बस्ने ताम्रकार सिद्धिराजले श्री सर्वेश्वर महादेव कुम्भेश्वर प्रति राजाको जयकामना गर्दै सुनमोलमा ध्वजा समर्पण गरेको ।

### कुम्भेश्वर मन्दिरको दोश्रो घण्टामा

ने.सं. १०६६ पौष शुदी १५ मा कोवहाल बस्ने बेखा लाल मुल्मी श्रेष्ठले, आफ्ना पुर्खा जयकृष्णमुल्मीबाट ने०सं० ८३१ सालमा चढाएको घण्टा ९० सालको भूकम्पले जीर्णभै पुनः जीर्णोद्धार गरी दिएको उल्लेख छ ।

### बङ्गलामुखो द्वारनेरको शिलास्तम्भमा

ने०सं० १०७५ आषाढ कृष्ण षष्ठीको दिन श्री बङ्गला मुखी देवीको नित्यपूजा एवं भजन कीर्तन आदिको निमित्त चाहिने घिउ, तेल किन्नलाई ३ रोपनि जग्गा आयस्ताको लागी श्रद्धा चन्दा प्रदान गर्ने महानुभावहरुको शुभ नामावलि उल्लेख गरिएको छ ।

## पञ्चलामुखी पेटीको ठूलो शिलापत्रमा

वि.सं. २०१० साल, पात्रबंश राउत गणेशलाल श्रेष्ठले श्री सर्वेश्वर भट्टारक कुम्भेश्वर मन्दिरको चौतर्फी चतुष्कोण-का ढुङ्गाले भुईंतला सर्वत्र स्थान व्यापक रूपले छापिई शोभा बढाई दिएको उल्लेख छ।

## ढुंगधाराको शिलापत्रमा

२०१५ साल फाल्गुनमा श्री ५ महेन्द्रबाट कुम्भेश्वर धारा, पोखरी एवं पर्खाल पेटी समेतको पुनः निर्माण गरी बक्सेको उल्लेख छ।

## गोसाईं कुण्ड देवलको भित्तामा

२०१७ साल, "ललितपुर जिल्ला विकासकोष" बाट सहायता र स्थानीय जनसहयोग समेतबाट गौरीकुण्ड (गोसाईंकुण्ड) को मन्दिर पुनः निर्माण गरी दिएको उल्लेख छ।

× × × ×

# पवित्र पुण्यभूमि कुम्भेश्वर क्याम्प भित्र विराजित विविध देव–देवीका मूर्तिहरुको–नामावलि

## कुम्भेश्वर मन्दिरबाट आग्नेकोणस्थित मूर्तिहरु-

(१) ज्याडै प्राचीन भएको गणेशमूर्ति (मन्दिर सहित)
(२) उभिएका गणेशमूर्ति

(३) चतुरबाहु भगवती
(४) मनोकामनादेवी (मूर्तिरहित)
(५) कृतिमुख भैरब
(६) कलशोपरिस्थित उत्कुटु आसन सिद्ध
(७) पञ्चवक्त्र शिवलिङ्ग (सानो देवल सहित)
(८) रामलक्ष्मण मूर्ति र विष्णु मूर्ति
(९) खड्गपुस्तकधारी मञ्जुश्री
(१०) मयूरासनस्थित कुमार
(११) उभिएका कुवेरको मूर्ति
(१२) द्वादश रूप नारायण
(१३) शिवलिङ्ग
(१४) शङ्कर मूर्ति
(१५) गौरीको मूर्ति
(१६) सरस्वती मूर्ति
(१७) शीतलादेवी (खट जस्तो मन्दिर सहित)
(१८) सूर्य मूर्ति (सानो ढुंगे देवल सहित)
(१९) वालसुकी नागराज मूर्ति
(२०) उमामहेश्वर परिवार (खण्डित)
(२१) क्षेत्रपाल (मण्डल)

कैलाश भन्ने ठाउँमा—

(२२) शिवलिङ्ग
(२३) उमामहेश्वर परिवार

दक्षिणतर्फका मूर्तिहरू-

(१) उन्मत्त भैरव काष्ठमूर्ति

(२) गणेश काष्ठ मूर्ति
(३) कुमार "
(४) प्रचण्ड उमादेवी "
(५ श्री बज्रलामुखीदेवी
(६) मातृगण
(७) आगमदेवता (माथिलो तल्लामा]
(८) भीमसेन मूर्तिहरु
(९) अङ्ग छिन्न-भिन्न मूर्तिहरु (समसुद्दीन आक्रमणकालीन?)

नैऋत्यस्थित मूर्तिहरु

(१) बद्रीनारायण (२ तले छाना मन्दिर सहित)
(२) केदारनारायण( २ तले छाना " ")
(३) शिवलिङ्ग

पर्खालको भित्तामा-

(४) उमामहेश्वर
(५) विष्णुको मूर्ति
(६) विष्णुको मूर्ति
(७) हनूमान "
(८) शिवलिङ्ग

पश्चिम दिशातर्फका मूर्तिहरु—

(१) हरिशङ्कर मूर्ति (सतल भित्र)
(२) लक्ष्मीनारायण " "

(३) कुन्ती महारानी मूर्ति ?
(४) ब्रह्मा, विष्णु, महेश्वर

मूल ढोकानेर–

(५) गणेश
(६) महाकाल

वायव्यकोण तर्फका मूर्तिहरु–

(१) गुप्तेश्वर लिङ्ग
(२) लक्ष्मीनारायण मूर्ति
(३) अष्टबाहु नारायण

उत्तर दिशास्थित मूर्तिहरु–

(१) कुम्भेश्वर पोखरी
(२) प्रचण्ड घोरीनाग
(३) गोसाई कुण्ड (मन्दिर सहित)
(४) हरिशङ्कर
(५) बुद्ध मूर्ति
(६) विष्णु मूर्ति
(७) उमामहेश्वर
(८) लक्ष्मीदेवी मूर्ति
(९) सूर्यरथ सहित सूर्यमूर्ति
(१०) चतुर्मुख शिवलिङ्ग
(११) शिवलिङ्ग

## ईशान दिशा तर्फका मूर्तिहरु–

(१) मुक्तेश्वर लिङ्ग (मक्तेश्वर मण्डप १६ खुट्टे पाति)
(२) शिवलिङ्ग
(३) ठूलो आसन सहित शिवलिङ्ग
(४) वृक्षदेवता (विशाल रूप पिप्पल)
(५) गुह्येश्वरी कुण्ड
(६) शिवलिङ्ग
(७) पदमासनस्थित नारायण
(८) विष्णु मूर्ति (मन्दिर सहित)
(९) विष्णु मूर्ति
(१०) अष्टवाहु नारायण
(११) तारादेवी
(१२) विष्णु मूर्ति
(१३) उमामहेश्वर
(१४) तारादेवी
(१५) पद्मासनस्थित महालक्ष्मीदेवी
(१६) कलशोपरीस्थित उत्कुटु आसन चतुरवाहु कुम्भेश्वर ?

## पूर्वदिशा तर्फका मूर्तिहरु-

(१) अष्टभुज नारायण
(२) शिवलिङ्ग
(३) शिवलिङ्ग

बगैंचामा रहेका

(४) चैत्यदेवता

(५) झंकेश्वरीदेवी (मूर्ति रहित)
(६) ललितादेवी "
(७) कुमारीदेवी "
(८) बालकुमारीदेवी
(९) अन्नपूर्णादेवी

### मध्यस्थ-कुम्भेश्वर मन्दिर भित्रका मूर्तिहरु—

(१) श्री सर्वेश्वर भट्टारक सदाशिव लिङ्ग
(२) कुम्भेश्वर लिङ्ग
(३) शिवलिङ्ग
(४) अगस्त्य ऋषि

## ललितपुर सहर भित्र स्थापना गरी राखिएका विविध शिवलिङ्गहरुको स्थान-निर्देशन

| | |
|---|---|
| (१) श्री सर्वेश्वर कुम्भेश्वर (क्याम्पभित्र) जम्मा | १८ |
| (२) कुम्भेश्वर बंगला पछाडि | १ |
| (३) आलुकोहिटी स्थान | २ |
| (४) मृत्युञ्जय (धंतील) | ३ |
| (५) शङ्खमोलनेर | १५ |
| (६) सिकबहील | ४ |
| (७) सेंथु महादेव | १ |
| (८) गाहिटी | २ |

| | |
|---|---|
| (९) वंबहाल | १ |
| (१०) भेलाछें टोल | ३ |
| (११) तोम्बहाल | १ |
| (१२) तुयूलाक | १ |
| (१३) ,, मूछें भित्र | १ |
| (१४) बखुंबहाल | १ |
| (१५) खपीछें | १ |
| (१६) चयासल | ३ |
| (१७) भोलाखेल | ३ |
| (१८) बालकुमारी स्थान | ४ |
| (१९) ,, देको | १ |
| (२०) त्यागल टोल | ३ |
| (२१) लुंखुसि गङ्गामहादेव | १ |
| (२२) नर्चाहिटी चौर | २ |
| (२३) सुवाहाल | १ |
| (२४) सुन्धारा टोल | ११ |
| (२५) येच्छुबहाल | १ |
| (२६) नूग न्हूछें भित्र | १ |
| (२७) हेनुबहाल | १ |
| (२८) छुसीखा | १ |
| (२९) हःखा | १ |
| (३०) जोगाल | २ |
| (३१) सौगल | ७ |
| (३२) सौगल हिटी | ८ |

(३३) सँागल देवज्ञ १
(३४) मुकुंबहाल १
(३५) लामूल १
(३६) थपाह्टिी १
(३७) ॐ थैना (नलिबुमहादेव) १
(३८) खिङ्ग्वोस्थान १
(३९) चाकबाहील बालकुमारी १
(४०) भगुनची १
(४१) हाँगल टल १
(४२) ईताछेँ १
(४३) चाकुबाहिल १
(४४) तथंनबी १
(४५) टगल टोल १
(४६) टंगल हिटी १
(४७) छगंखेल छगणेश्वर १
(४८) ईबहाल १
(४९) ईखालखु १
(५०) ईखा १
(५१) जोम्वहाल १
(५२) महापाल १
(५३) भाईदेवल मंगलबजार १

---

ॐ ललितपुर टोलको विशेषतामा चार प्रधान शिवलिंगको नाम उल्लेख गरेको छ– यथाः– नलिबु, बलिबु,, सुलिबु, कुलिबु ।

| | | |
|---|---|---|
| (५४) भष्मेश्वर | मङ्गलबजार | १ |
| (५५) विश्वनाथ | " | १ |
| (५६) ह्खुसि | " | १ |
| (५७) भण्डारखाल | " | १ |
| (५८) कृष्णमन्दिर बायाँ तर्फ | " | १ |
| (५९) " | को माथि | १ |
| (६०) भीमसेन कोपेश्वर | | १ |
| (६१) धपगाल | | १ |
| (६२) बाहालुखा त्रिलिंगेश्वर | | ३ |
| (६३) अग्निमठ | | १ |
| (६४) थवु टोल | | १ |
| (६५) नासंद्योननी | | १ |
| (६६) पूर्णचण्डी | | ३ |
| (६७) तधंक्यत्र | | १ |
| (६८) त:पुखु | | १ |
| (६९) इति टोल | | १ |
| (७०) जाउलाखेल | | ७ |
| (७१) ,, तमुको | | १ |
| (७२) पुल्चोक | | १ |
| (७३) ,, स्थूल अगाडि | | १ |
| (७४) छायेबहाल | | १ |
| (७५) ,, | विश्वेश्वर | १ |
| (७६) ,, | बगैचा | २ |

(७७) घलखु मठ

(७८) पिम्बहाल

(७९) स्वनिह्म १

(८०) पाटन ढोका बाहिर १

(८१) चाकुपाट १

(८२) तापाहिटी १

(८३) नायलखु १

(८४) तलाछें १

(८५) स्वथ नारायण अगाडि १

(८६) ,, मठ १

(८७) कुलिमवाहाल १

---

❁ इति ❁

## लेखकको अन्य पुस्तकहरु

(१) नेपाल लिपि संग्रह

(२) नेपाल बौद्ध विहार र ग्रन्थ सूचि

(३) बौद्ध शिक्षा प्रथम भाग

(४) आर्यावलोकितेश्वर परिचय

(५) वर्ण परिचय (प्रचलित नेवारीको)

प्रकाशक- श्री ५ को सरकार, पुरातत्त्व र संस्कृति विभाग

प्रेसतर्फ दौड्न खोज्दै छ-

(६) प्राचीन लिपि-वर्ण परिचय,

प्रकाशन अधिभार-

श्री ५ को सरकार पुरातत्त्व र संस्कृति विभाग ।

---

मन्जुश्री प्रेस, ललितपुर, नेपाल ।